फोन नं.:०१-४२११२०८
०१-४२११२१४
फ्याक्सः ०१-४२११२८६
०१-४२११२५७
इमेल:control@moha.gov.np



नेपाल सरकार

# गृह मन्त्रालय

(शान्ति सुरक्षा तथा अपराध नियन्त्रण शाखा)

सिंहदरवार,
काठमाडौं, नेपाल।

पत्र संख्याः-शा.सु. ०७७/०७८/१६
प्राप्त पत्र संख्या र मितिः-
च.नं.:- १८८

मितिः २०७७/०९/०६

विषयः- सूचना उपलब्ध गराइएको सम्बन्धमा ।

श्री रुक्शना कपाली,
कार्यकारी निर्देशक, क्वयेर युथ ग्रुप, ललितपुर ।

तपाईले मिति २०७७/०८/२७ गते निवेदनमार्फत सूचनाको हकसम्बन्धी ऐन, २०६४ को दफा ३ र ७ बमोजिम माग गर्नुभएको "यौनिक तथा लैङ्गिक अल्पसंख्यक समुदायका व्यक्तिहरुलाई लिङ्गको महलमा अन्य जनाई नागरिकता जारी गर्ने सम्बन्धी निर्देशिका, २०६९" को प्रमाणित प्रतिलिपि यसैसाथ संलग्न राखी उपलब्ध गराइएको व्यहोरा अनुरोध छ ।

(प्रेमलाल लामिछाने)
उपसचिव/सूचना अधिकारी

Regd No. दर्ता नं. 003/066/6८
Date मिति 2067/09/06
PN पत्र 1

## यौनिक तथा लैङ्गिक अल्पसंख्यक समुदायका व्यक्तिहरुलाई लिङ्गको महलमा 'अन्य' जनाई नागरिकता जारी गर्ने सम्बन्धि निर्देशिका, २०६९

प्रस्तावनाः- नेपालको अन्तरिम संविधान, २०६३ तथा नेपाल पक्ष राष्ट्र भएका मानव अधिकार सम्बन्धी कानुन र सम्मानित सर्वोच्च अदालतद्वारा जारी भएका आदेशहरु समेतका आधारमा यौनिक तथा लैंगिक अल्पसंख्यक समुदायका व्यक्तिहरुले आफ्नो पहिचान सहितको अधिकार निर्वाध रुपमा उपभोग गर्न पाउने वातावरण सृजना गर्नको लागि यस समुदायका व्यक्तिहरुलाई लिङ्गको महलमा महिला वा पुरुष बाहेक "अन्य" उल्लेख गरी नागरिकता जारी गर्न आवश्यक देखिएकोले नेपाल नागरिकता नियमावली, २०६३ को नियम १७ ले दिएको अधिकार प्रयोग गरी मन्त्रालयले यो निर्देशिका बनाई जारी गरेको छ ।

### परिच्छेद १
### प्रारम्भीक

१. संक्षिप्त नाम र प्रारम्भः- (१) यस निर्देशिकाको नाम "यौनिक तथा लैङ्गिक अल्पसंख्यक समुदायका व्यक्तिहरुलाई लिङ्गको महलमा "अन्य" जनाई नागरिकता जारी गर्ने सम्बन्धि निर्देशिका" २०६९ हुनेछ ।

(२) प्रारम्भः- यो निर्देशिका नेपाल सरकार, गृह मन्त्रालयबाट निर्णय भई लागू हुने भनी तोकिएको मितिदेखि प्रारम्भ हुनेछ ।

२. परिभाषाः-

(क) "मन्त्रालय" भन्नाले, नेपाल सरकार, गृह मन्त्रालय सम्झनु पर्दछ ।

(ख) "लैङ्गिक पहिचान" भन्नाले हरेक व्यक्तिको भित्री मनबाट आएको अनुभूति र लिंङ्ग सम्बन्धी व्यक्तिगत अनुभव जुन जन्मदाको जैविक लिङ्गभन्दा विपरित र सो प्रतिकूल अन्य पहिरन बोली र व्यवहारबाट व्यक्त गरिने फरक लैङ्गिक अनुभूति सम्झनुपर्दछ ।

(ग) "यौनिक तथा लैङ्गिक अल्पसंख्यक व्यक्ति" भन्नाले महिला समलिङ्गी (Lesbian), पुरुष समलिङ्गी (Gay), द्विलिङ्गी (Bisexual), तेस्रो लिङ्गी (Transgender) र अन्तरलिङ्गी (Inter sex) व्यक्तिलाई जनाउँछ ।

(घ) "अन्य लिङ्गी" भन्नाले पुरुष र महिला बाहेकका अन्य यौनिक तथा लैङ्गिक अल्पसंख्यकहरु जनाउँछ ।

(ङ) "स्थानीय निकाय" भन्नाले गा.वि.स. नगरपालिका, उपमहानगरपालिका, महानगरपालिका र यी भित्रका वडा कार्यालयहरु समेतलाई जनाउँछ ।

(च) "सम्बन्धित अधिकारी" भन्नाले प्रमुख जिल्ला अधिकारी र निज मातहातको नागरिकता जारी गर्ने अन्य अधिकारीलाई सम्झनुपर्दछ ।
(छ) "शैक्षिक संस्था" भन्नाले विद्यालय, कलेज, विश्वविद्यालय वा मान्यता प्राप्त अनौपचारिक शिक्षासँग सम्बन्धित निकायहरु वा तालिम केन्द्र समेतलाई सम्झनुपर्दछ ।

## परिच्छेद २
## नागरिकताको लागि आवेदन र सिफारिस

**३. नागरिकताको लागि आवेदन दिन सक्नेः-** (१) आफ्नो लैङ्गिक पहिचान अनुसारको नागरिकता प्राप्त गर्न चाहने, प्रचलित कानुन बमोजिम नागरिकता प्राप्त गर्न योग्य यौनिक तथा लैङ्गिक अल्पसंख्यक समुदायको व्यक्तिले आफ्नो लैङ्गिक पहिचानका आधारमा अन्य लिङ्ग अंकित नागरिकता लिन चाहेमा सम्बन्धित स्थानीय निकायमा निवेदन दिनु पर्नेछ ।
(२) स्थानीय निकायले प्राप्त निवेदनमा लैंगिक पहिचान अनुसारको नागरिकता जारी गर्नको लागि आवश्यक छानविन गरी सम्बन्धित अधिकारी समक्ष सिफारिश गर्न सक्नेछ ।

## परिच्छेद ३
## शैक्षिक संस्थामा अभिलेख राख्ने र सिफारिश गर्ने

**४. शैक्षिक संस्थामा अभिलेख राख्नेः-** (१) कुनै पनि शैक्षिक संस्थाले सो संस्थामा अध्ययनरत व्यक्तिहरुको लैङ्गिक पहिचानको अभिलेख राख्दा यौनिक तथा लैङ्गिक अल्पसंख्यक व्यक्तिहरुको पहिचान खुल्ने गरी महिला वा पुरुष जस्तै "अन्य" उल्लेख गरी छुट्टै अभिलेख राख्न पर्नेछ ।
(२) नागरिकता प्रमाणपत्र प्राप्त गर्न, शैक्षिक वा अन्य प्रयोजनको लागि आफू अध्ययनरत रहेको शैक्षिक संस्थाबाट यौनिक तथा लैङ्गिक अल्पसंख्यक व्यक्तिहरुले आफ्नो पहिचान बमोजिमको सिफारिस गरिदिन निवेदन दिएमा अभिलेख बमोजिम सिफारिस गरिदिन सक्नेछ ।

## परिच्छेद ४
## नागरिकता सम्बन्धी व्यवस्था

**५. नागरिकता जारी गर्नेः-** (१) नेपालको प्रचलित कानुन बमोजिम नागरिकता प्राप्त गर्न योग्य यौनिक तथा लैङ्गिक अल्पसंख्यक व्यक्तिहरुले सम्बन्धित स्थानीय निकाय र शैक्षिक संस्थाको अभिलेख बमोजिम सिफारिस भैआए यस समुदायका व्यक्तिहरुको हकमा "लिङ्ग" को ठाउँमा "अन्य" लेखी नागरिकता जारी गर्न सक्नेछ ।

## परिच्छेद ५
## विविध

**६. अभिलेख राख्नुपर्नेः-** सम्बन्धित कार्यालयहरुले यौनिक तथा लैङ्गिक अल्पसंख्यक समुदायका व्यक्तिहरुलाई जारी गरिएको नागरिकताहरुको अभिलेख छुट्टै राख्नुपर्ने छ ।

उक्त अभिलेखहरुको विवरण प्रत्येक महिना मासिक प्रगतिमा छुट्टै महलमा उल्लेख गरी मन्त्रालयमा पठाउनु पर्नेछ ।

**७. निर्देशिका बमोजिम हुनेः-** यस निर्देशिकामा उल्लेख भएका व्यवस्थाहरु अन्य प्रचलित कानुनसँग नबाँझिएको हद सम्म यसै निर्देशिका बमोजिम र अन्यका हकमा प्रचलित कानुन बमोजिम हुनेछ ।



क्वयेर युथ ग्रुप

**Queer Youth Group**

दर्ता नं : २४४१३५/०७७/०७८

स्था.ले.नं : ६०९८२६५८२

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

---

**नेसं ११४१ थिंला २४**

**२०७७ मंसिर २७**

Ref. No. चलानी : ०१२/७७/७८

Date मिति २०७७/०८/२७

PN पत्र १

श्री सूचना अधिकारीज्यू,

गृह मन्त्रालय ।

**विषय : सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ ।**

महोदय,

उपरोक्त सम्बन्धमा निम्न तपसिलमा उल्लिखित विवरण, तथ्याङ्क तथा सूचना हाम्रो संस्थागत प्रयोजनको लागि आवश्यक परेको जानकारी गराउँदै उक्त सूचना नेपालको संविधानको धारा २७ तथा सूचनाको हक सम्बन्धि ऐन, २०६४ को दफा ३ र ७ अनुसार ती सूचना तथा जानकारीको प्रमाणित प्रतिलिपि उपलब्ध गराई दिनुहुन यो निवेदन गर्दछौँ। हामी यस संस्था क्वयेर युथ ग्रुप नेपालमा सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्तिहरूको अधिकारका निम्ति कार्यरत छौँ र हामी नेपालमा पारलैङ्गिक तथा विविध लैङ्गिक पहिचानका व्यक्तिहरू (Transgender & Gender Diverse People) सम्बन्धी अनुसन्धान गर्दैछौँ।

**<u>तपसिल</u>**

१) "यौनिक तथा लैङ्गिक अल्पसंख्यक समुदायका व्यक्तिहरूलाई लिङ्गको महलमा 'अन्य' जनाई नागरिकता जारी गर्ने सम्बन्धि निर्देशिका, २०६९"को प्रमाणित प्रति उपलब्ध गराइ पाउँ ।







रुक्शना कपाली

कार्यकारी निर्देशक, क्वयेर युथ ग्रुप

---


ईमेल: queeryouthgroup.nepal@gmail.com

सम्पर्क नं : +९७७-९८०८२६२६९९

ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३

 http://fb.com/QYGnepal/

 qygnepal  QueerYouthGroup